༄༅། །འཕགས་པ་ཚེ་དང་ཡེ་ཤེས་དཔག་ཏུ་མེད་པ་ཞེས་བྱ་བ་ཐེག་པ་ཆེན་པོའི་མདོ། །

।। आर्य अपरिमितायुर्ज्ञान महायान सूत्र विहरतिस्म ।।

༄༅། །འཕགས་པ་ཚེ་དང་ཡེ་ཤེས་དཔག་ཏུ་མེད་པ་ཞེས་བྱ་བ་ཐེག་པ་ཆེན་པོའི་མདོ། །

॥ आर्यं अपरिमितायुर्ज्ञान महायान सूत्र विहरतिस्म ॥

आर्य अपरिमित आयुर्ज्ञान महायान सूत्रमा यसरी वर्णन गरिएको पाइन्छ कि:-



एक समय मैले यस्तो सुनेको थिएँ । श्रावस्ति महानगरको जेतवनमा रहेको अनाथपिण्डिक नामक महाजनको बगैंचा-मा निर्माण भई राखेको जेतवन महाविहारमा धर्म सभा भईरहेको थियो ।

जुन धर्मसभामा साढेतेन्हसय १३५० क्षीणाश्रव वीतराग अर्हत् भिक्षुगण र त्यस्तै सुविमुक्तचित्त भएका अनेकन बोधिसत्त्व महासत्त्वहरूको पनि उपस्थित थियो । सोही सभाको भव्य सिंहासनमा जगत्गुरू शास्ता सम्यक्सम्बुद्ध शान्तिनायक भगवान् बुद्ध श्री शाक्यमुनि तथागत विराजमान हुनु भएको थियो । यसै सुअवसरमा बहुजनहित सुखको निमित्त अनुकम्पा राखी त्यस सभाका सभामुख महाभिज्ञ बोधिसत्त्व मञ्जुश्रीलाई सम्बोधन गरी यसरी

आज्ञा गर्नु भयो–

भो मञ्जुश्रीकुमारभूत बोधिसत्त्व ! यहाँबाट पूर्वतिर रहेको अति सुदूर उर्द्ध दिशामा अत्यन्त विशुद्ध भएको अपरिमित गुण सञ्चय नाम लोकधातु थियो। जहाँ अपरिमित आयुर्ज्ञान सुविनिश्चित तेजोराज भन्ने तथागत अर्हत् सम्यक्सम्बुद्ध विराजमान हुनु भएको थियो। उहाँको विषयलाई लिएर केही वर्णन गर्न चाहन्छु, त्यो के कुरो हो भने–

जुन श्रद्धालु व्यक्तिले अपरिमित तथागतको ध्यान ज्ञान चर्यालाई अनु-स्मरण गर्दै श्रद्धा निश्चयपूर्वक आराधना साधना एवं उपासना गर्छ, त्यस पुण्यको प्रभावले त्यो व्यक्ति अल्पआयु भई विविध रोगब्याधि कष्टबाट अकालमृत्यु भई मर्नु नपर्ने, दीर्घजीवी चिरञ्जीवी भई एकसय वर्ष भन्दा बढी सुख शान्तिपूर्वक बाँच्न सक्ने अपरिमित आयु प्राप्त भई अपरिमित गुण सञ्चय नाम सुखावति लोकधातुमा जन्म लिई अन्त्यमा संसार

सागरबाट पार भई भवचक्रबाट विमुक्त हुन जानेछ।

यही बुद्धवचनामृतको आदेश उपदेशलाई नै आधार मानेर मञ्जुश्री बोधिसत्त्व समक्ष अपरिमित आयुर्ज्ञान सूत्रको विषयलाई लिएर यसरी वर्णन गरिएको छ कि–

मञ्जुश्रीकुमार बोधिसत्त्वलाई सम्बोधन गरी आज्ञा गर्नुभयो- तिमीले एकचित्त गरी सुन, उर्द्ध लोकमा अपरिमित गुण सञ्चय नाम गरेको (सुखा-

वती लोकधातु) थियो । जुन भुवनमा अपरिमितायुर्ज्ञान सुविनिश्चित तेजोराज तथागत अर्हत् सम्यक्सम्बुद्धले कोटानकोटि असंख्य बुद्ध बोधि-सत्त्वहरू उपस्थित गराई अमितप्रभतेजले शोभाय्मान अचिन्त्य ज्ञानगुण करूणाले संयुक्त श्रीअपरिमित तथागतको आयुपुण्यज्ञान सत्यसिद्धि प्रसादले, अधिष्ठानले युक्त असंख्य गौरवपूर्ण महत्वपूर्ण धारणी विद्याको सारभूत अपरिमित धारणी वाचन गर्न लगाई धर्मोपदेश गरी रहनु भएको थियो ।

उक्त अपरिमित धारणी यस प्रकार छ–

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित तेजोराजाय तथागताऽर्हते सम्यक्सम्बुद्धाय । तद्यथा । ॐ पुण्य पुण्य महापुण्य अपरिमितपुण्य अपरिमितायुर्पुण्य ज्ञानसम्भारोपचिते ॐ सर्वसंस्कार परिशुद्धे धर्मते गगन समुद्गते स्वभाव विशुद्धे महानय परिवारे स्वाहा ।

भो मञ्जुश्रीकुमार ! सुन, यस जम्बुद्वीपका मनुष्यहरू अल्पआयु भई

सय वर्षसम्म पनि आयु नपुग्दै अकालमै मृत्यु भएर गएका छन्। यसै कारण हे मञ्जुश्रीकुमार! जसले श्रद्धापूर्वक अपरिमित गुण वर्णन कीर्ति यस धर्म-पर्याय पुस्तक लेखि अथवा लेखन लगाई पढ्छ, सुन्छ अथवा आफ्नो घरमा वा कुनै पवित्र स्थानमा गई प्रचार प्रसार गर्छ अथवा यसको महत्वप्रति ध्यानाकर्षण गरी अरूलाई पनि सुन्न लगाउँछन् वा सुनाई दिन्छन्, शिक्षा दीक्षा प्रदान गर्छन्, यस्तो प्रचार प्रसार भएको देखेर सुनेर खुशी

प्रकट गरी अनुमोदन मात्र गरे पनि अन्तराय भय, अल्पआयु दोष निवारण भई चिरञ्जीवी हुनें सुअवसर पाउने छ। साथै यस 'अपरिमित सूत्र' उल्लेखित सद्धर्म पुस्तकलाई आदर गौरवपूर्वक दिव्यवस्त्र, चीरवस्त्र, छत्र, ध्वज, पताक आदि तानवितान चँदुवा सजाई दिव्य वाद्य, घण्ट बजाई सप्तविधानुत्तर पूजा अर्चना गरे मात्र पनि ती भक्तहरूलाई सुखपूर्वक चीरञ्जीवी हुने सुअवसर मिल्ने छ।

हे मञ्जुश्रीकुमार ! यसै अपरिमित सूत्रमा लेखिएका अपरिमित आयुर्ज्ञान नाम धारणी विद्या जसले १०८ पटक श्रवण गर्छ अथवा आफूले पनि सुमधुर ध्वनिले उच्चारण गरी अरूलाई पनि सुनाउँछ, यी दुवै पक्षलाई पनि चिरञ्जीवी फल उपभोग गर्न मिल्ने छ।

जसले आफ्नो आयु क्षय नहोस् भन्नाखातिर अपरिमित तथागतको नाम मात्र स्मरण गरी अथवा उहाँको गुण वर्णन सहितको धारणी सूत्र आफू-

ले पढेर अरूलाई सुनाउँछ, तिनीहरू पनि धेरै वर्षसम्म जीवित हुन पाइनेछ।

हे मञ्जुश्रीकुमार ! धेरै कालसम्म जीवित हुने मनोवाञ्छा, अभिलाषा भएका कुनै पनि उपासक उपासिकाहरूले यो अपरिमित धारणी विद्यालाई श्रद्धा निश्चयपूर्वक पढ्छन्, पढाउँछन् अथवा लेखछन्, लेखाउँछन् भन्ने सुकीर्ति युक्त भई तिनीहरूको मनोकामना सिद्ध हुनेछ।

हे मञ्जुश्रीकुमार ! यही अपरिमित धारणीलाई शुद्धचित्त गरी शान्त

गम्भीरपूर्वक धैर्य धारण गरी शुद्ध रूपले जसले लेख्छन्, लेखाउँछन्, शुद्ध पवित्र स्थानमा सजाई सुरक्षित राखिन्छन् तथा सुपात्रजनहरूमा दानप्रदान गर्छन्, ती श्रद्धालुहरू देहावसान पछि अपरिमित तथागतको बुद्धक्षेत्रमा जन्म लिन जान्छन्।

अतएव हे मञ्जुश्रीकुमार! यस्तो महत्वपूर्ण गौरवमय परिशुद्धयुक्त भएको श्री अपरिमित तथागतको ज्ञान गुण एवं प्रज्ञोपाय विमोक्ष ज्ञानले

यहीं अपरिमित धारणीलाई श्रद्धा गौरवका साथ अतीत कल्पमा अपरिमित गुण सञ्चय नाम लोकधातु (सुखावती) भन्ने बुद्ध क्षेत्रमा ९९०००००० उनान्सय करोड प्रमाणले बुद्धहरू सम्मिलित भई बडो हर्ष उल्लासमय सुमधुर एकै स्वरले श्रद्धा गौरवपूर्वक उच्चारण गर्दै गएका थिए।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

यस्तै परम्परानुसार अतीत कल्पमा सुखावती भुवनकै स्थानमा ८४००००००० चौरासि करोड बुद्धहरू भेला भई यहीं अपरिमित धारणी एकै स्वरले उच्चारण गर्दै गए।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

यस्तै रूपले परम्परानुसार अतीत कल्पमा उहीं बुद्ध क्षेत्रमा ७७०००००००० सतहत्तर करोड बुद्धहरू भेला भई यहीं अपरिमित धारणी सगौरवपूर्वक

एउटै स्वरले उच्चारण गर्दै गए।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

एवंप्रकारले अपरिमित धारणीप्रति आस्था राख्दै अतीत कल्पमा ६५०००००००० पैंसाठी करोड बुद्धहरू जमघट भई एउटै स्वरले उच्चारण गर्दै गए।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

यस्तै प्रकारले एक समय अतीत कल्पमा ५५००००००० पचपन्न करोड बुद्धहरू बुद्ध क्षेत्रमा समागम भई एउटै स्वरले सश्रद्धा उच्चारण गर्दै गए।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

एवंरीतले प्राचीनकालमा ४५००००००० पैंतालीस करोड बुद्धहरू बुद्ध क्षेत्रमा बसी यहीं धारणी श्रद्धापूर्वक एउटै स्वरले उच्चारण गर्दै गए।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ... ...

एवंप्रकार पुनः अतीत कल्पमा ३६०००००००० छतीस करोड बुद्धहरू बुद्ध क्षेत्रमा संलग्न भई यहीं अपरिमिता धारणी एकै स्वरले पाठ गर्दै गए।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

यस्तै किसिमले अमितप्रभ भुवन सुखावती लोकधातु बुद्धक्षेत्रमा बसी एउटै सुमधुर स्वरले दशवटा गंगानदीमा जति बालुवा हुन्छन्, त्यति नै गणनाका हिसाबले अचिन्त्य बुद्ध बोधिसत्त्वहरू जम्मा भई यहीं अपरिमिता

धारणी समग्ररूपमा वाचन गर्दै गएका थिए ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... — — ... ... ...

यस्तो आदर्शयुक्त महत्वपूर्ण सगौरवमय अतुलनीय अनुपम अधिष्ठान-युक्त यस अपरिमिता धारणीप्रति श्रद्धानिश्चयपूर्वक जसले पढ्छ, पढाउँछ अथवा पढेको सुनिन्छ अथवा यस सूत्र लेखि अरूहरूलाई पुस्तक दान दिन्छन् वा आफ्नै घरको यथायोग्य स्थानमा राखी आदर गौरवपूर्वक पूजा अर्चना

गरी पाठ गर्छन्, त्यस्ता भक्तजनहरू निश्चय नै शतायुपर्यन्त जीवित हुने गर्दछन् र उनीहरूको मनोवाञ्छा सिद्ध हुन्छन्।

जसले यस अपरिमित आयुर्ज्ञान सूत्रको महत्व बुझेर प्रसन्न भई स्व परहित सुखको निमित्त लेख्दछन् अथवा लेखिदिन्छन्, प्रचार प्रसार गरिदिन्छन् भने त्यस धर्मात्मा श्रद्धालु व्यक्ति कदापि नरक, तिर्यक, प्रेत, असुर-लोकमा जन्मिनु नपर्ने हुन्छन्। यदि मनुष्यलोकमा जन्म भएतापनि दशेन्द्रिय

हीन भएर अपाङ्ग हुनु नपर्ने हुन्छ। नीच चण्डाल कुलमा समेत जन्म लिनु नपर्ने भई, अष्टाक्षण दोषबाट मुक्त भई सत्कुलमा मात्र जन्म लिने सुअवसर पाउने छ। साथै जन्मजमान्तरको कुरो सम्झन सक्ने जाति स्मरण ज्ञानले युक्त हुनेछ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

कुनै सज्जनले यस अपरिमित सूत्र पुस्तकको प्रतिलिपि गर्छ, गराउँन्छ

अथवा प्रचारार्थ दान दिन्छ, यस्ता सज्जन भक्तजन निश्चय नै चतुराशीति धर्मस्कन्ध बुद्ध वचन सद्धर्म ग्रन्थ लेखि दान गरिदिए सरह पुण्य सञ्चय भई समान फल उपभोग गर्न पाइनेछ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

यस्तै प्रकारले जसले श्रद्धापूर्वक अपरिमित सूत्र लेख्छ अथवा लेखाउँछ, प्रचारार्थ दान प्रदान गरी दिन्छ, अरूलाई सम्झाई बुझाई दिन्छ, त्यो व्यक्ति-

लाई पनि चतुराशीति सहस्र धर्मराजिक चैत्य बनाई दिइएको र जीर्णोद्धार गरी दिइएको पुण्य फल मिल्नेछ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... — ... ... ... ... ... ... ...

जुन श्रद्धालु व्यक्तिले यो पुस्तकलाई आदर गौरवपूर्वक प्रकाशनार्थ लेखि दिन्छ अथवा सो पुस्तक दान गरिदिन्छ, यस पुण्यको प्रभावले पंचानन्तर्य भन्ने पंचमहापाप दोषबाट छुट्कारा पाइनेछ।

पंचानन्तर्यदोष यी हुन्– जन्मदातृ आमा बाबुलाई हत्या गर्ने, अर्हत् हत्या गर्ने, तथागतको शरीरमा घाटक गर्ने, भिक्षु संघ बीच भेद गर्ने र बुद्ध चैत्यको गर्भ लुटी विनाश पार्ने ।

जसले यी अपरिमितसूत्र पुस्तकलाई लेखेर अथवा लेखाएर सत्पात्रहरूलाई दान दिन्छन्, त्यसको पुण्यले उसलाई कुनै किसिमको डाकिनी शाकिनी,

भूतप्रेत, छाया, अपस्मारक, यक्ष, राक्षस आदि अमनुष्यदोषबाट छुट्कारा पाइनेछ साथै अकाल मृत्यु भयबाट पनि मुक्त हुनेछ ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

जसले यहीं पुस्तक लेखी लेखन लगाई प्रतिलिपि छपाई वितरण गरिन्छ, त्यो दानपतिलाई मरणान्त समय नवनवति बुद्ध कोटिहरूले दर्शन दिई सहस्रौं बुद्धहरूले सही दिशातिर बुद्धक्षेत्रको बाटो देखाई दिनेछ भन्ने विषय-

मा कुनै प्रकारको संदेह नरहने आश्वासन दिई राखेको छ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

यस्तै प्रकारले जुन ब्यक्तिले यस पुस्तक लेखी लेखन लगाई दानप्रदान गरी वितरण गरिदिन्छ, त्यो ब्यक्तिलाई अन्त्यमा चतुर्महाराजिक, वीणाराज, खड्गराज, ध्वजराज, चैत्यराजहरूबाट आरक्षा गरिदिनु हुनेछ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

यसरी यहीं पुस्तक लेखी लेखन लगाई अरू हरूलाई जसले दान गरि दिनेछ अथवा उक्त पुस्तक पाठकलाई दान दक्षिणा दिन्छन् भने त्यस ब्यक्ति-लाई त्रिसाहस्र प्रमाण सप्तरत्न दान दिएको सरह पुण्य मिल्नेछ ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनि श्चित ... ... ... ... ... ... ... ... ...

सूत्रहरू मध्ये राज समान भएको यस अपरिमित सूत्रका धारणी विद्या निरन्तर पाठ गरी, पूजा सत्कार गरी, यसको महत्व माथि ब्याख्या गर्ने

धर्मोपदेशक धर्मभाणकको सेवा सुश्रुषा गरी, स्वागत सत्कार गरी भोजन दान दिन्छ भने बुद्धभाषित सबै सद्धर्मग्रन्थलाई पूजा सत्कार गरिएको तुल्य पुण्य फल मिल्नेछ ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ... ...

जसले अपरिमित तथागतको ज्ञानकाय, रूपकायलाई एकचित्तले संस्मरण गरी पूजा अर्चना गरी पाठ गर्छ वा अरूलाई पाठ गर्ने प्रेरणा दिन्छ,

त्यस भक्तको पापराशि सुमेरू समान भएतापनि क्रमशः नूनमा पानी हाले सरह विस्तारै पूर्वजन्मको पापकर्म बिलाएर जानेछ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

यस अपरिमित सूत्रलाई आदर गौरवपूर्वक स्वागत् सत्कार गर्नाले दश-दिक् लोकधातुका सकल बुद्धलाई स्वागत् गरिएको समान पुण्य मिल्नेछ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

यस्तै प्रकारले यस अपरिमित धारणीलाई जस्ले लेख्छ लेखाउँछन्, यस्को प्रभावले उनीहरू कदापि स्त्रीभाव लिएर जन्म लिन जानु नपर्ने हुन्छ ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

श्रद्धापूर्वक जस्ले यो अपरिमित सूत्र पाठ गरिएको शब्द (स्वर) सुन्छन्, यस्को फलले मात्र पनि तिर्यकयोनिमा जन्म लिइरहेका पशुपंक्षीको भविष्यमा अविवर्तिक बोधिसत्त्व भएर जन्म लिनलाई पुण्य मिल्नेछ ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

यो अपरिमिता सूत्र पाठ गर्ने श्रद्धालु ब्यक्तिलाई कसैले एक कार्षापण मात्र सहयोगको रूपमा दान दक्षिणा दिएमा पनि त्यस ब्यक्तिलाई सुमेरू समान धनराशि दान दिएको सरह पुण्य मिल्नेछ ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

कुनै श्रद्धालु ब्यक्तिले श्रद्धा निश्चय राखि आफ्नो पाठ पूजाको निमित्त

जुन ठाउँमा अपरिमित सूत्रलाई सुसज्जित गरी प्रतिष्ठा गरिराखेको (ठाउँ) हुन्छ, त्यस ठाउँ चैत्यभूमि सरह वन्दना गर्न योग्य छ भनि भन्नु भयो।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

जसरी सप्ततथागत- विपश्वी, शिखि, विश्वभूव, ककुच्छन्द, कनकमुनि, काश्यप एवं शाक्यमुनिलाई पूजा सत्कार गरेको पुण्यफल यतिउति छ भनी गणना गर्न सकिन्छ तर, यस अपरिमित सूत्रलाई पाठ गरेको पुण्यफलको

संख्या व्यक्त गर्न सकिन्दैन ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

जस्तो पर्वतराज सुमेरू समान सप्तरत्न आदि पूर्ण गरी दान दिएको पुण्यफलको संख्या भन्न सकिन्छ, तर यस अपरिमित सूत्र वाचन गरेको पुण्य प्रसंशा भन्न सकिन्दैन ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

जस्तो चतुर्महासागरमा रहेको पानी एक एक थोपा गरी गणना गर्न सकिन्छ, तर यो अपरिमित सूत्र धारणी वाचन गरेको पुण्य प्रसंशा भन्न सकिन्दैन।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ...

जसले श्रद्धाभक्तिपूर्वक अपरिमित सूत्र धारणी आफैले लेख्छ, अर्कालाई लेखन लगाउँछ र नित्यपूजा सत्कार गरी पढ्छ पढाउँछ, त्यस्तालाई दश-

दिशाका बुद्धक्षेत्रमा उपस्थित सकल बुद्धहरूलाई अभिवादन गरी पूजा अर्चना गरेको समान पुण्य फल मिल्नेछ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

जसले यो अष्टशत्तोतर १०८ अक्षर सहित भएको अपरिमित तथागत-को धारणी मंत्रलाई बिहान सबेरै उठी स्नान, दान गरी शुद्ध वस्त्र लगाई पवित्र स्थान विहार, गुम्बा, तीर्थस्थल एवं सिद्ध गुहामा बसी श्रद्धाभक्तिपूर्वक

यो अपरिमितायुर्ज्ञान सुविनिश्चित तेजोराज तथागतको ध्यान ज्ञान समाधिमा बसी नित्य नित्य अनुस्मरण गर्छ, उसलाई अपरिमित आयु लाभ भई सुख शान्तिपूर्वक क्रमशः निर्विघ्न साथ मनोरथ सिद्ध हुनेछ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

अपरिमित तथागतको साधकलाई क्रमशः सम्बोधिज्ञान लाभ गर्ने भई अन्त्यमा अपरिमित गुण सञ्चय नामक बुद्धक्षेत्रका अधिपति अपरिमित

तथागतको श्रीमुखद्वारा निरन्तर रूपले व्याकरण अभिषेक लाभ हुने भई जीवन मुक्त भएर जानेछ भनी बुद्ध भगवानले आज्ञा गर्नु भयो ।

ॐ नमो भगवते अपरिमितायुर्ज्ञान सुविनिश्चित ... ... ... ... ... ... ... ...

यस्तै अपरिमित तथागतको गौरवमय गाथा पुण्य प्रसंशा धर्मोपदेश सुन्नु पाएकोमा त्यस जेतवन महाविहारमा उपस्थित भएका सभामुख महाभिज्ञ मञ्जुश्रीकुमार बोधिसत्त्व सहित देव, मनुष्य, गन्धर्व, किन्नर, सिद्ध विद्याधर

आदि सभासद् अत्यन्त हर्षित भई अनुमोदन गरे ।

यो सुखद् उपलक्ष्यमा शान्तिनायक महाकारुणिक भगवान बुद्धको गुण-कीर्तन गरी दशपारमिता गाथा स्तुतिद्वारा मञ्जुश्रीकुमारले यसरी उद्गार ब्यक्त गर्नुभयो–

दानबलेन समुद्गत बुद्ध दानबलाधिगतो तांनरसिंह
दानबलस्यच श्रुयन्तिशब्द कारुणिकस्यपुरे प्रविशन्तु ।

शीलबलेन समुद्गत बुद्ध शीलबलाधिगतो तांनरसिंह
शीलबलस्यच श्रुयन्तिशब्द कारूणिकस्यपुरे प्रविशन्तु।
क्षान्तिबलेन समुद्गत बुद्ध क्षान्तिबलाधिगतो तांनरसिंह
क्षान्तिबलस्यच श्रुयन्तिशब्द कारूणिकस्यपुरे प्रविशन्तु।
वीर्यबलेन समुद्गत बुद्ध वीर्यबलाधिगतो तांनरसिंह
वीर्यबलस्यच श्रुयन्तिशब्द कारूणिकस्यपुरे प्रविशन्तु।

ध्यानबलेन समुद्गत बुद्ध ध्यानबलाधिगतो तांनरसिंह
ध्यानबलस्यच श्रुयन्ति शब्द कारूणिकस्यपुरे प्रविशन्तु ।
प्रज्ञाबलेन समुद्गत बुद्ध प्रज्ञाबलाधिगतो तांनरसिंह
प्रज्ञाबलस्यच श्रुयन्ति शब्द कारूणिकस्यपुरे प्रविशन्तु ।
प्रणिधिबलेन समुद्गत बुद्ध प्रणिधिबलाधिगतो तांनरसिंह
प्रणिधिबलस्यच श्रुयन्ति शब्द कारूणिकस्यपुरे प्रविशन्तु ।

उपायबलेन समुद्गत बुद्ध उपायबलाधिगतो तांनरसिंह
उपायबलस्यच श्रुयन्ति शब्द कारूणिकस्यपुरे प्रविशन्तु।
बलबलेन समुद्गत बुद्ध बलबलाधिगतो तांनरसिंह
बलबलस्यच श्रुयन्ति शब्द कारूणिकस्यपुरे प्रविशन्तु।
ज्ञानबलेन समुद्गत बुद्ध ज्ञानबलाधिगतो तांनरसिंह
ज्ञानबलस्यच श्रुयन्ति शब्द कारूणिकस्यपुरे प्रविशन्तु।

।। इतिश्री दशपारमिता स्तुति समाप्तः ।।

यस दशपारमिता गाथाको आशय यस प्रकार बुझिन्छ—

जसरी सिद्धार्थ गौतम बुद्धले अनुत्तर सम्यक्सम्बुद्धत्त्व प्राप्त गर्नको लागि अनेक जन्म जन्मान्तरमा दशपारमिता चर्यामा निरन्तर अभ्यास गरी अधिक कोशिस गरे। जुन प्रयत्नको फलस्वरूप अनुत्तर सम्यक्सम्बोधिज्ञान प्राप्त भयो। र अन्तमा संसार सागरबाट विमुक्त भएर सम्पूर्ण प्राणीहरू मध्ये उत्तम नरसिंह हुनु भयो। साथै सकल देव मनुष्यहरू मध्ये जगत्गुरू शास्ता बन्न पुग्यो।

तसर्थ हामीहरूले पनि यो दशपारमिता गाथालाई सश्रद्धा र गौरवपूर्वक सुनेर आचारण परिशुद्ध गरेको खण्डमा निश्चय नै कारूणिकस्यपुर भन्ने बुद्ध क्षेत्रमा जन्म लिन जानेछौं भनी उक्त दशपारमिता गाथा पढी मञ्जुश्री बोधिसत्त्वले उद्गार ब्यक्त गरी बुद्धको प्रशंसा गर्नु भयो।

शास्ता भगवान बुद्धलाई दशपारमिता गाथाद्वारा स्तुति गरिसकेपछि, बुद्ध वचनामृत धर्मोपदेश अपरिमिता सूत्रको व्याख्या सुनिसकेपछि त्यस सभाका सभामुख मञ्जुश्री बोधिसत्त्व प्रभृति उपस्थित सबै श्रोतावर्गहरूले–धन्य धन्य भगवान बुद्ध भनी प्रशंसा गरी, त्रि–प्रदक्षिणाद्वारा वन्दना गरी, हर्षोल्लासपूर्वक आ–आफ्नो स्थानमा फर्केर गए। यतिमै आर्य अपरिमिता महायान सूत्र यहीं समाप्त भयो।

।। शुभमस्तु सर्व जगताम् ।।

## अपरिमिता तथागत स्तोत्र

अपरिमितायुर्नामानं सम्बुद्धं त्रिजगद्गुरूम्
अमेय आयुदातारं धर्मराजं सदानमे ।
यस्यानु स्मृतिमात्रेन गतायुरपि जीवति
तस्य लोकेश्वरस्याहं भजामि सर्वभावतः ।

## अपरिमिता मन्त्र

ॐ अमरणिजीवन्तियै स्वाहा ।

× × ×

ॐ अमृत आयु ददे स्वाहा ।

## सम्पादकीय

महायानी बौद्ध जगतका अति प्रसिद्ध अपरिमित आयु पुण्य ज्ञान गुणका अधिपति श्री अपरिमित तथागतको गुण वर्णन सहित आर्य अपरिमित महायानसूत्रको विषयलाई लिएर बुद्ध शाक्यमुनिले जेतवन महाविहारमा बोधिसत्त्व मञ्जुश्रीलाई धर्मदेशना गर्नु भएको थियो ।

धेरै कालान्तर पछि महायान बुद्धधर्म उत्तर हिमालय प्रदेशमा पनि प्रचलनमा आयो । साथसाथै भारत-का बौद्ध विद्वान आचार्य पुण्यसंभवद्वारा तिब्बत भाषामा भाषान्तरित गरे । त्यसपछि बिसौं शताब्दीमा आएर भिक्षु सुमन विकासधरज्यूले नेपाल भाषामा अनुवाद गरी प्रकाशमा ल्याए ।

अझ यहीं अपरिमिता सूत्रलाई बढी लोकप्रियता र ब्यापकता ल्याउन खातिर गुरू कर्मज्ञान सागर लामाज्यूका प्रिय शिष्य लुम्बिनी अंचल बुटवल जिल्ला सुखानगर निवासी श्रद्धालु उपासक बहादुर सिं

थापा मगरज्यूले धर्मचित्त उत्पति गरी स्वर्गीय आफ्ना आमा बाबु तुलाराम र मन्सुवाको पुण्य स्मृतिमा यो पुस्तक प्रकाशनार्थ अनुरोध गर्न म कहाँ आउनु भयो । उहाँको अनुरोध अनुसार मेरो क्षमताले भ्याएसम्म यथासम्भव प्रयत्न गरी राष्ट्र भाषा नेपालीमा नै अनुवाद एवं सम्पादन गरिदिएको छु । फलस्वरूप यहाँहरूको समक्ष प्रस्तुत गर्ने सुअवसर प्राप्त भयो ।

प्रस्तुत पुस्तक प्रकाशनार्थ आर्थिक सहयोग प्रदान गर्नु हुने श्रद्धालु बहादुर सिं थापामगर तथा पुस्तकको भाषा शुद्धिकरण गर्नु हुने मेरो मित्र डा. भद्ररत्न वज्राचार्य र प्रेस सम्बन्धी काममा सहयोग गर्नु हुने मेरो मित्र हेराकाजी वज्राचार्य, बेखाराज वज्राचार्य एवं अपरिमित तथागतको फोटो चित्र लेखि सहयोग प्रदान गर्नु हुने राजकुमार शाक्यज्यू प्रति पनि धन्यवाद ज्ञापन गर्दै पुनः प्रेसकपि लेखि मद्दत गरि सहयोग गर्ने सुश्री हिराशोभा शाक्यप्रति धन्यवाद एवं कृतज्ञता ज्ञापन गर्दछु ।

प्रस्तुत पुस्तकमा भूलचूक हुन गएमा विज्ञ पाठकहरूसंग क्षमा याचना गर्दछु ।

आशा छ, यस पुस्तक प्रकाशन भएको पुण्यानुभावले सर्वत्र सर्वदाकाल मंगलमय सुख शान्ति मिलोस् । अस्तु ।

प्रकाशक:-

बहादुर सिं थापामगर
बुटवल, सुखानगर १०/४९९
लुम्बिनी अंचल
नेपाल ।

अनुवादक एवं सम्पादक:-

हेमराज शाक्य
पाटन महाबौद्ध, थैना टोल
जयश्री विहार
फोन नं. ५-२३२५०

२०५२ फाल्गुण १

